ISSN 2350-8973
Volum 15, Number 7, 2016

# आदिवासी जनजाति जर्नल

## Journal of Indigenous Nationalities





नेपाल सरकार
संघीय मामिला तथा स्थानीय विकास मन्त्रालय
**आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान**
लगनखेल, ललितपुर

# आदिवासी जनजाति जर्नल

# Journal of Indigenous Nationalities






**नेपाल सरकार**

**आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान**

लगनखेल, ललितपुर, नेपाल

पो.ब.नं. १४३८५

इमेलः researchnfdin@gmail.com, होमपेजः www.nfdin.gov.np

# आदिवासी जनजाति जर्नल

## Journal of Indigenous Nationalities

प्रकाशक : आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान
लगनखेल, ललितपुर, नेपाल





प्रकाशन प्रति : ६००
प्रकाशन मिति : २०७३ असार
ले-आउट : कामसिंह चेपाङ
मुद्रण : सिटी अफसेट प्रेस, फोनः ५२६०७५२

ISSN: 2350-8973

# भक्तपुरका नेवार *कुनांविनां*

डा. ओमकारेश्वर श्रेष्ठ

**अध्ययनको सारांश**

भक्तपुर आकारमा सानो तर कला, संस्कृतिमा साह्रै धनी जिल्ला हो । नेपालको जनगणना २०११ अनुसार देशभर नेवारहरू १३,२१,९३३ छन्, जसमा ८४६,५५७ वक्ता छन् । भक्तपुर जिल्लामा ७७ जातजतिको बसोबास रहेको छ। यहाँको कूल जनसंख्या ३०४,६५१ मध्ये नेवारको संख्या १३८,८७३ (४५.५८ प्रतिशत) रहेको छ (केतवि २०१२) । भक्तपुरको पुरानो नाउँ *भादगाउँ, भक्तग्राम, खोपृङ, माखोपृङ* उल्लेख भएको अभिलेखहरूमा पाइन्छ ।

प्रस्तुत अध्ययनमा भक्तपुर नगरको मुख्य बस्तीलाई कार्यथलो बनाइएको छ । अध्ययनमा प्रयोग गरिएका सामग्री धौभडेल (२०७१; ८१–८६)बाट साभार लिइएको छ । तथ्य विश्लेषण गर्दा खोपनेवारमा प्रयोग हुने ध्वनिलाई *कुनांविनां* (Totem), आक्षरिक बनोट (Syllabic structure), पदार्थ (Syllabic gloss) र प्रायोगिक अर्थ (Implied meaning) दिइएका छन् । आवश्यक स्थानमा भाषावैज्ञानिक टिप्पणी समेत दिइएको छ ।

**मुख्य शब्द**

*कुनांबिनां, खोपनेवार, Totem, भाषा वंशावली, आक्षरिक बनोट (Syllabic structure), पदार्थ (Syllabic gloss) प्रायोगिक अर्थ (Implied meaning)*

## १. पृष्ठभूमि

नेपालका ७५ जिल्लामध्ये भक्तपुर आकारमा सानो तर कला, संस्कृतिमा साह्रै धनी जिल्ला हो । नेपालको संविधान २०७२ अनुसार भक्तपुर प्रदेश नं ३ मा परेको छ । यस प्रदेशमा १३ वटा जिल्ला समावेश गरिएका छन् । नेपालको जनगणना २०११ अनुसार देशभर नेवारहरू १३,२१,९३३ छन्, जसमा पुरुष ६४२,३५२ र महिला ६७९,५८१ छन् । त्यसमा वक्ताका हिसावले ८४६,५५७ देशभरमा, जस्मा पुरुष ४१४,४९१ र महिला ४३२,०६६ छन् । भक्तपुर जिल्लामा ७७ जातजतिको बसोबास रहेको छ । त्यसमध्ये नेवार जातिको संख्या अग्रणी रहेको देखिन्छ । यहाँको कूल जनसंख्या ३०४,६५१ छन् भने नेवारको संख्या १३८,८७३ रहेको छ । यो संख्या जिल्लाको कूल जनसंख्याको ४५.५८ प्रतिशत हो (केतवि २०१२) ।

भक्तपुरको अवस्थिति २७° ४०' २०" उत्तरी अक्षांश र ८५° २०' ४०" पूर्वी देशान्तर छ र यसको परिधि ११९ वर्गकिमी छ । भक्तपुर नगरपालिकाको जनसंख्या ८३,६५३ छ, जसमा पुरुष ४२,६७८, र महिला ४०,९८० छन् । जनघनत्व १२,७५३ देखिन्छ भने परिधि ७ वर्गकिमि मात्र छ । भक्तपुरको पुरानो नाउँ अभिलेखमा *भादगाउँ, भक्तग्राम, खोपृङ, माखोपृङ* उल्लेखित भएको पाइन्छ । नेवार हरूले जनबोलीमा यसलाई *खोप* भन्ने गर्दछन् । भक्तपुरका नेवारहरूले आफ्ना भावना भक्तपुरको नेपालभाषा (यसपछि *खोपनेवार* भनिएको)मा साटासाट गर्छन् । यसलाई *खोपभाए* भनिन्छ । भक्तपुर नेवार बाहुल्य क्षेत्र भएकोले यहाँ स्थान, थर, पर्व, आदिमा पनि त्यस भाषाको स्पष्ट प्रभाव परेको देखिन्छ । उपथरलाई भक्तपुरमा *बिनाम* अर्थात् विशेष नाम भनिन्छ भने पाटनमा *कुनां* अर्थात् *कूलनाम* भनिन्छ । यसको अंग्रेजी अनुवाद गर्दा धेरैले Surname गर्ने गर्दछन्, तर यहाँ अध्ययन गरिएको Totem हो । यस लेखमा यसलाई *विशेषनाम* वा कुलनाम चलनचल्तीको भाषामा *कुनांबिनां* भनिएको छ ।

नेपालमा विकृत किसिमको वर्ण व्यवस्था राजा सुपुष्पदेवको समयमै आएको देखिन्छ । त्यसपछि नेवार जातिलाई लिच्छवीकालीन राजा वसन्तदेव (सन् ५०६-५३२)को पालामा नेपालमा वर्णव्यवस्थाको अतिरिक्त जाती प्रथाको शुरूवात भएको देखिन्छ । तत्कालीन समाज चार जात १८ थरमा विभाजित देखिन्छ (बज्राचार्य २०३० :९१-१०३) । जयस्थिति मल्लको (१४३७-१४५३) शासनकालमा चार वर्ण, ६४ जातमा विभाजन गरियो । भाषा वंशावली (लम्साल २०२३ :४) अनुसार ७२५ थरको व्यवस्था गरिएको देखियो । ती जातउपजात भित्रका नरनारीहरूले गर्नुपर्ने अलग अलग स्थिति (Legal code) बनाइएको पाइयो । त्यस स्थितिलाई *न्यायविकासिनि* (नेपालभाषामा न्यायशास्त्र) नाम दिइएको छ (तमोट २०१४ : ६) । जयस्थिति मल्लको मृत्यू भएको २२३ वर्षपछि सिद्धिनरसिंह मल्लले ललितपुर राज्यमा ४८ वटा विभिन्न जात र थरको व्यवस्था गरी एउटा स्थिति (Code) बाँधेको देखिन्छ (श्रेष्ठ २०६६ : ५३) । राजा सुरेन्द्रविक्रम शाहको पालामा प्रधानमन्त्री जङ्गबहादुर राणाले मुलुकी ऐन (१९१०) जारी गरी नेवार समुदायभित्रको *कुनांविनां*लाई कानूनी मान्यता दिएको पाइन्छ (वस्ती २०६३ : ४०७-४१६) । यस लेखमा भक्तपुरमा हाल पाइएका

*विनाम* वा *कुलनाम*हरूको भाषावैज्ञानिक अध्ययन गरिएको छ। केही वर्ष पहिलै भक्तपुरमा मात्र करीब ४७६ वटा नेवार *कुनांविनां* भएको अनुमान छ[1]। प्रस्तुत लेखमा भक्तपुरमा पाइएका ५७४ वटा नेवार *कुनांविनां* को अध्ययन भएको छ।

## २. अध्ययनको उद्देश्य

भक्तपुर नेपाल राज्यका पुरानो राजधानी, ऐतिहासिक, सामाजिक, सांस्कृतिक वैभवले भरिपूर्ण र हालको राजनीतिक विभाजनमा सानो भू-भाग ओगटेको नगर जिल्ला हो। यो जिल्लाका धेरै विशेषतामध्ये नेवार जातिभित्र रहेको*कुनांविनां* (Totem) ले सिङ्गो नेवार जातिको पहिचानका विविध आयाम बोकेको पाइन्छ। यस लेखमा मुलतः *कुनांविनां* को भाषिक विशेषता केलाउने उद्देश्य राखिएको छ।

## ३. अध्ययन विधि

प्रस्तुत अध्ययन भक्तपुर नगरको मुख्य बस्ती खासगरी पूर्वमा *च्याम्हसिंह*, दक्षिणमा हनुमन्ते खोला, पश्चिममा सल्लाघारी र उत्तरमा *ब्यासी* भित्र कार्यथलो बनाई गरिएको छ। भक्तपुरका नेवार *कुनांविनां*को ध्वनी, रूप र आर्थिवैज्ञानिक अध्ययन गरिएको छ। यदाकदा अर्थ स्पष्ट नभएको ठाउँमा गैर-भाषावैज्ञानिक (सामाजिक, सांस्कृतिक) टिप्पणी दिइएको छ। यद्यपि यस अध्ययन ध्वनी, रूप र अर्थमा सीमित छ। अध्ययनमा प्रयोग गरिएका सामग्री धौभडेल (२०७१; ८१–८६)बाट साभार लिइएको छ। तथ्य विश्लेषण गर्दा खोपनेवारमा प्रयोग हुने ध्वनिलाई *कुनांविना* (Totem), आक्षरिक बनोट (Syllabic structure), पदार्थ (Syllabic gloss) र प्रायोगिक अर्थ (Implied meaning) दिइएका छन्। आवश्यक स्थानमा भाषावैज्ञानिक टिप्पणी समेत दिइएको छ। सन्दर्भसामग्री APA प्रणालीको छैठौ संशोधनअनुरुप दिइएको छ।

## ४. अध्ययनको संगठन

भक्तपुरको नेवार समुदायमा प्रचलित *कुनांविना*को अध्ययनलाई व्यवस्थित गर्न उपशीर्षक ५.१ मा *जु* (ज्यु), उपशीर्षक ५.२ मा श्रेष्ठ (उत्तम), उपशीर्षक ५.३ मा तत्सम संस्कृत, उपशीर्षक ५.४ मा तद्भव संस्कृत, उपशीर्षक ५.५ मा लवट (वर्णशंकर), उपशीर्षक ५.६ मा बन्जार, उपशीर्षक ५.७ मा वासस्थान, उपशीर्षक ५.८ मा बासिन्दावाचक प्रत्यय, उपशीर्षक ५.९ मा कीट, पशुपंक्षी, उपशीर्षक ५.१०मा खाद्य परिकार, उपशीर्षक ५.११मा भुतप्रेतादि, उपशीर्षक ५.१२मा सेवक, मालिक, उपशीर्षक ५.१३मा कर्मी समूह, उपशीर्षक ५.१४मा वंशज, उपशीर्षक ५.१५-जन-मानिस, उपशीर्षक ५.१६मा शरीर संरचना, उपशीर्षक ५.१७ बानी व्यहोरा, उपशीर्षक ५.१८मा गुठी र पुजा सामग्री, उपशीर्षक ५.१९ हैसियत, उपशीर्षक ५.२० खगोलीय पिण्ड, उपशीर्षक ५.२१ दिन, उपशीर्षक ५.२२मा सेना सम्बन्धित, उपशीर्षक ५.२३ मृत्यु सम्बन्धित शब्द, उपशीर्षक ५.२४मा

---

[1] योगेशराजसितको कुराकानीमा आधारित।

*खो* (*ख्व,* मुहार), उपशीर्षक ५.२५मा *खि* (विष्टाजन्य नाम), उपशीर्षक ५.२६ मा शीपविशेष, र उपशीर्षक ५.२७ नेपाली थर, र उपशीर्षक ५.२८ मा विविध गरी २८ वटा उपशीर्षकमा संगठीत गरिएको छ।

## ५. नेवार *कुनांविनां*

नेवार जातिभित्र विद्यमान थरउपथर लिच्छ्वीकालमा १८ थिए। जयस्थिति मल्लको शासनकालमा चार जात, ७००*कुनांविना* मा विभाजन गरिएको देखियो। सिद्धिनरसिंह मल्लले केही नियम बनाएको देखिन्छ। जङ्गबहादुर राणाको समयमा मुलुकी ऐनले नेवार जातिभित्रको*कुनांविनां*लाई कानूनी मान्यता दिई नियम बनाइएको पाइन्छ। यस लेखमा भक्तपुरमा हाल पाइएका *कुनांविनां* को भाषावैज्ञानिक अध्ययन गरिएको छ। हाल भक्तपुरमा करीब ६००वटा *कुनांविना* भएको अनुमान छ। यिनमा *खोपनेवार* को ध्वनी अनुरुप अर्थ दिइएका छन्।

### ५.१ *जु* –ज्यू

*जु* प्रत्यय जोडिएका ५७ शब्द यस वर्गमा परेका छन्। नेपालभाषामा सवैभन्दा धैरै प्रयोग हुने प्रत्यय *जु* (ज्यू) हो। सामान्य बालकदेखि राजा महाराजासम्मका लागि आदर गर्न यही *जु* प्रयोग गरिएको पाइन्छ। सामान्य व्यक्तिकोलागि शब्दपछाडि-*जु* प्रयोग हुन्छ भने अतिप्रिय बालकको लागि नामै *जुजु* राख्ने प्रचलन छ। राजा महाराजाको लागि नामको दुईटा (*जु-जु* ) जोडेर *जुजु* भनिन्छ। अचेल यो शब्द लिङ्गभेद गरी बालकलाई *जुजु*-राजा) र बालिकालाई *लानी* (रानी) प्रयोग गरिएको पाइन्छ।

| *कुनांविना* | *आक्षरिक वनोट* | *आक्षरिक अर्थ* | *प्रायोगिक अर्थ* |
|---|---|---|---|
| *(१) अगजु* | *अग-जु* | *अवाल-आद* | *अवालेज्यु* |
| *आचाजु* | *आचा-जु* | *आचार्य-आद* | *आचार्यज्यु* |
| *कजु* | *क-जु* | *केराउको बोट-आद* | *केराउकोबोटको सुकुटी ज्यू* |
| *कसजु* | *कस-जु* | *कायस्थ-आद* | *लेखनदासज्यू* |
| *कसुजु* | *कसु-जु* | *केराउ पिढेको-आद* | *केराउको छोप (?)* |
| *कालुजु* | *का-लु-जु* | *कालिमाटि-भेट्टाउने-आद* | *कालिमाटी भेट्टाउने महाशय* |
| *कापाजु* | *का-पा-जु* | *कालिमाटि-खन्ने-आद* | *कालिमाटी खन्ने महाशय* |
| *कुलजु* | *कुलु-जु* | *कुलु-आद* | *छालाको बाजा मिस्त्रीज्यू* |
| *कुरन्जु* | *कोरं-जु* | *थोत्रो-आद* | *भुत्रे महाशय* |

कोरञ्जु शब्द *कोरन* र *जु* मिलेर बनेको छ। ल*कोरन*को अन्तिम *न* नासिक्यमा बदलिएर *कोरं* हुन्छ। *कोरं*को ओकार उकारमा बदलिएर *कुरन* हुन्छ। यसलाई सुत्रमा यसरी (*कोरनजु* >*कोरंजु* (अन्तिम *न* लुप्त) *कुरंजु* (स्वरवृद्धि) देखाउन सकिन्छ।

| | | | |
|---|---|---|---|
| *कुम्हरजु* | *कुम्हर-जु* | *कुमाले-आद* | *कुमालेज्यू* |
| *कोन्हाजु* | *कोन्हा-जु* | *खटकुलो-आद* | *खटकुलो बोक्ने ?* |
| *खिउँजु* | *खिउँ-जु* | *अधेरो-आद* | *धमिलो महाशय* |
| *खाइजु* | *खाएश्रखाइ-जु* | *प्रसाद-आद* | *प्रसादी महाशय* |
| *खावाजु* | *खा-वा-जु* | *पोखरी-पाले-आद* | *पोखरीको पाले महाशय* |
| *ख्वाखजु* | *खो-ख-जु,* | *मुहार-कोटी-आद* | *केन्द्रकोघरमा रहने महाशय* |
| *ख्वाउँजु* | *ख्वाउँ-जु* | *चिसो-आद* | *जुम्से महाशय (मल्ल)* |

*खो* र *खु* मा *ओ* बाट उकारमा साटिँदा चिसो ठाउँमा बस्ने महाशय "पनौतिका मल्ल" को ठाउँमा खुँडे बुझिएको छ। यही *खोउँ* श्रुतिकरण भएर काठमाडौमा *ख्वाउँ* (चिसो) हुन गएको छ। *ख्वाउँ* चिसा" शब्द भक्तपुरमा *ख्वउँ* (*खोउँ*) हुन्छ। सो *खो* मा स्वरवृद्धि भएर *खु* हुन्छ। यस अर्थमा *ख्वाउँजु, खौंजु* र *खुजु* एउटै देखिन्छ।

| | | | |
|---|---|---|---|
| *गाइँजु* | *गाइँ-जु* | *गाइने-आद* | *गाइनेज्यू गोराजु* |
| *गोरा-जु,* | *मोटो-आद* | *मोटे-आद* | *मोटे महाशय* |
| *घजु* | *घ-जु* | *घडा-आद* | *घडाबोक्ने महाशय* |
| *चुल्याजु* | *चुल्या-जु* | *कुइना-आद* | *कुइनाहुने महाशय* |
| *च्योजु* | *च्यो-जु* | *सेवक-आद* | *सेवक महाशय* |
| *छ्वाजु* | *छ्वा-जु* | *दाँतउछिट्टिनु-आद* | *दाँतउछिट्टिएको महाशय* |
| *जुगिजु* | *जुगि-जु* | *योगी-आद* | *योगीमहाशय* |
| *तातिजु* | *ताति-जु* | *फुस्रेरोग-आद* | *फुस्रे महाराज* |
| *त्यातजु* | *त्या-त-जु* | *काट्नु-भुत-आद* | *त्यान्द्रो महाशय* |
| *दुवजु* | *दु-व-जु* | *देव-विप्र-आद* | *तलेजुकापुजारी (?)* |
| *धुँजु* | *धुँ-जु* | *बाघ-आद* | *बाघ महाशय* |
| *धाँजुँ* | *धा-जुँ* | *ठुलो-आद* | *ठुले महाशय* |
| *धँजुँ* | *धन-जुँ* | *धन-आद* | *धन महाशय* |
| *ध्वोंजु* | *ध्वोंजु* | *जम्बुक-आद* | *जम्बुकराज* |
| *ध्वोजुदुकुछु* | *ध्वो-जु-(धु)दुकु-छु* | *स्याल-आद-भण्डार-मुसा* | *जम्बुकराजको भण्डारे* |
| *तसिजु* | *तसि-जु* | *तख्ता-आद* | *तख्ता महाशय* |
| *तिविजु* | *ति-वि-जु* | *निगालो-दिनु-आद* | *निगालो बाल्ने महाशय* |
| *थकुजु* | *थकु-जु* | *ठकुरी-आद* | *ठकुरी महाशय* |
| *थुया, थुयाजु* | *थुया-जु* | *पाउनु-आद* | *मालिक महाशय* |

*थुवाल* शब्दले मालिक अर्थ्याउँछ। यो शब्द क्रमशः *थुवाल*>*थुवाः* (क्षतिपुरक दीर्घमात्रा) श्र*थुवा* (दीर्घता क्षय)>*थु* (अन्तिमवर्ण लुप्त) भएको छ। मालिक बुझाउन *थु* वा *थुवा* समानान्तर रूपमा प्रयोगमा छ। *थुवा* को *वा* (द्वयोष्ठ्य श्रुति) बाट तालव्य श्रुति *या* मा बदलिएको छ। यसरी

*थुवा*>*थुया* भएको छ। यही नियम रक्षक बुझाउने शब्द *पिवाल*>पिवाः (क्षतिपुरक दीर्घमात्रा) *पिवा* (दीर्घता क्षय)>*पिया*(श्रुति तालव्यिकरण)मा पनि लागू भएको छ।

| | | | |
|---|---|---|---|
| *नागाजु* | *नागा-जु* | *नागा-आद* | *नागा-महाशय* |
| *नाएजु* | *नाए-यः)-जु* | *नायक-आद* | *नायक महाशय* |

नेपाल भाषामा *नाए* शब्दले कसाइँ समूहलाई बुझाउँछ भने-*जु*ले आदरार्थी। यस अर्थमा यस शब्दको अर्थ कसाइँज्यू हुन्छ। तर भक्तपुर लगायत अन्यत्रका नेवार समाज मनोविज्ञानलाई हेर्दा यो अर्थसित तालमेल भएको पाइएन। भक्तपुरमा *नाएजु* समूहको सामाजिक तथा सांस्कृतिक हैसियत नेवारहरू मध्ये राम्रो हैसियत हुने उपल्लो दर्जाको देखिन्छ। भाषाको रुपध्वनिपरिवर्तन प्रक्रिया नियाल्दा यस्तो देखिन्छ *नायक* >*नायः* (पदान्तवर्ण लुप्त, क्षतिपूरक दीर्घ)>*नाय* (दीर्घता क्षय) >*नाअजु* (पदान्त व्यञ्जन क्षय)>*नाएजु* (स्वरवृध्दि) देखाउन सकिन्छ। यस विश्लेषणबाट नायकजु (नाइकेज्यू) बाट रुपध्वनी परिवर्तन प्रक्रियाका विभिन्न चरणहरू पार गर्दै हाल बाँकी *नाएजु* शब्द बन्न पुगेको देखिन्छ।

| | | | |
|---|---|---|---|
| *नान्जु* | *नाङ-जु* | *नाम-आद* | *नाम महाशय* |
| *पाँजु* | *पाउँ-जु* | *अमिलो-आद* | *खोपासीका मल्ल* |
| *पहि, पहिजु* | *पहि-जु* | *पहरी-आद* | *पहरी महाशय* |
| *फोंजु* | *फों-जु* | *माग्नु-आद* | *भिक्षुक महाराज* |
| *बाटाजु* | *बा-ता-जु* | *आधा-कोटि-आद* | *आधा कामगर्ने महाशय* |
| *बेकोजु* | *बेको-जु* | *बाङ्गो-आद* | *बाङ्गे महाराज* |
| *भलजु* | *भल-जु* | *भैरव-आद* | *भैरव महाराज* |
| *भाताजु* | *भाता-जु* | *भाट-आद* | *भाटगायक महाशय* |
| *भुजु* | *भु-जु* | *भुत-आद* | *भूत महाशय* |
| *भ्योजु* | *ज(भ्याःश्र)भ्यो-जु* | *लागेको-आद* | *अपवित्र महाशय-?)* |

भ्याक् (छोइछितो) लागेको अर्थमा प्रयोग हुने *भ्याक*को अन्तिम व्यञ्जनवर्ण लुप्त हुन्छ र क्षतिपूर्ति स्वरूप *भ्या*मा दीर्घमात्रा विसर्ग (:) थपिएको छ। *खोपनेवार*को स्वभावअनुरुप दीर्घ आकारमा स्वरवृद्धि (Vowel rising) भएर *भ्यो* हुन पुगेको छ। यसको रुपध्वनी परिवर्तन प्रक्रिया *भ्याक्*>*भ्याः* (क्षतिपूरक दीर्घ) >*भ्या*(दीर्घताक्षय)>*भ्यो* (स्वरवृध्दि) हुन्छ। *भ्यो* मा आदरार्थी *जु* प्रत्यय जोडिएर *भ्योजु* शब्द बनेको छ।

| | | | |
|---|---|---|---|
| *महाजु* | *महा-जु* | *ठुलो-आद* | *मन्त्री, अमात्य* |
| *मगजु* | *मग-गः)-जु* | *मगर-आद* | *मगर महाशय* |
| *मुस्याजु* | *मुस्या-याः)-जु* | *चिराग-आद* | *चिराग बाल्ने महाशय* |
| *लाकजु* | *ला-क-को)-जु* | *मासु-डढ्नु-आद* | *मासुपोल्ने महाशय* |

लाकोजुको को (क्-ओ) उच्चारण गर्दा ओठ गोलो बनाउनु पर्नेमा (क्-अ) उच्चारण गर्दा ओठ अर्धगोलीत मात्र हुन्छ। यो जिब्रोको उचाइको हिसाबले स्वरक्षय (Vowel lowering) र ओठको आकारका हिसाबले अग्रकरण (Umlaut) भएको छ। खोपनेवारलाई *यैं-यलभाए* (काठमाडौं-पाटनको नेवार) बाट छुट्याउने एउटा आधार गोलोओठ पनि हो।

| | | | |
|---|---|---|---|
| *लाकांजु* | *ला-कां-जु* | *बाटो-नदेख्ने-आद* | *बाटो भुल्ने महाशय* |
| *लागेजु* | *ला-गे-जु* | *मासु-साट्नु-आद* | *मासुसाट्ने महाशय (?)* |
| *लवजु* | *लव-जु* | *नाफा-आद* | *लवट (वर्णशंकर) महाशय* |
| *वेयजु* | *वेय-जु* | *वेल-आद* | *बेल महाशय* |
| *सांजु, सांयजु, सैंजु, सांय* | *सैं-जु* | *भोट-आद* | *तिब्बत विज्ञ* |

*सांजु, सांयजु, सैंजु,* तीनवटै शब्द एउटै अर्थबोधक हुन्। *सँएको* अर्थ रौं, भोट वा तिब्बत हुन्छ। खोपनेवारमा अनुनासिक अकारान्तलाई आकारान्त उच्चारण गरिन्छ। जस्तो *सँ* (रौं) को *साँ,* बँ(भुँइ) को बाँ, *कँ* (कालिमाटी)को *काँ* आदि। यही *सँएबाट साँए* हुन्छ। एकाक्षरी भाषा भएकोले मध्यवर्ण संकुचन पनि निकै हुने गर्छ। यसकारण *साँएजु* बाट *साँजु* हुनगएको छ।

| | | | |
|---|---|---|---|
| *सुकाजु* | *सु-का-जु* | *सिउनु-धागो-आद* | *धागो महाशय* |
| *हाकुजु* | *हाकु-जु* | *कालो-आद* | *कृष्णाजी* |

## ५.२ श्रेष्ठ-उत्तम

श्रेष्ठ कुनै थर होइन यो नेवारहरूको उच्चवर्ग जनाउने समष्टीबोधक शब्द (An umbrella term used by the Newar elites) हो। नेवार समुदायमा विशेषतः *कुनांबिनां* ले नै चिनाउने प्रचलन अद्यापि छ। भक्तपुरबासी पढेलेखेका उच्च वर्गीय दावागर्ने र नेपालीभाषी समुदायलाई सो कुरा बुझाउने हेतुले खासगरी २०१७ सालपछिको राजनीतिक परिवर्तन पछि आदरार्थी-जु प्रत्ययको ठाउँमा श्रेष्ठ लेख्ने गरिएको पाइन्छ। त्यसरी नै अन्य *कुनांबिनां* भएकाले पनि अन्त्यमा श्रेष्ठ पद जोडेको पाइन्छ। यस वर्गमा २५ शब्द परेका छन्।

| | | | | |
|---|---|---|---|---|
| (२) | *कासिश्रेष्ठ* | *कासि-श्रेष्ठ* | *पेटी, कन्तुर-श्रेष्ठ* | *पेटी बोक्ने श्रेष्ठ* |
| | *किसिश्रेष्ठ* | *किसि-श्रेष्ठ* | *हात्ती-श्रेष्ठ* | *गजराज (नेवा-सं)* |
| | *कुन्छेश्रेष्ठ* | *कुम-छें-श्रेष्ठ* | *कुना-घर-श्रेष्ठ* | *कुनामा घर हुने श्रेष्ठ* |
| | खत्रीश्रेष्ठ | खत्री-श्रेष्ठ | खत्री-श्रेष्ठ | खत्रीश्रेष्ठ |
| | खोजुश्रेष्ठ | खौं -(ख्वाउ)-जु | चिसो-आद-श्रेष्ठ | नौतिका मल्ल |
| | *घुश्रेष्ठ* | *घु-श्रेष्ठ* | *धुलो-श्रेष्ठ* | *धुले श्रेष्ठ (?)* |
| | *चोच्छेश्रेष्ठ* | *चो-छे-श्रेष्ठ* | *छेउ-घर-श्रेष्ठ* | *छेउको घरमा रहने श्रेष्ठ* |
| | *चनहिखश्रेष्ठ* | *चन-हिख-श्रेष्ठ* | *मक्किनु-मोड-खट-श्रेष्ठ* | *मक्किएकोखटमा बस्ने श्रेष्ठ* |
| | *च्वमुश्रेष्ठ* | *चोमु-श्रेष्ठ* | *चमर-श्रेष्ठ* | *चमर डोलाउने* |

| | | | |
|---|---|---|---|
| *जोशीश्रेष्ठ* | *जोशी-श्रेष्ठ* | *ज्योतिष-श्रेष्ठ* | *जोशीश्रेष्ठ* |
| *जोश्रेष्ठ* | *जम्बुक-छैँ* | *स्याल-श्रेष्ठ* | *जोश्रेष्ठ* |
| *थाश्रेष्ठ* | *था-श्रेष्ठ* | *स्थान-श्रेष्ठ* | *स्थापित श्रेष्ठ* |
| *थापाश्रेष्ठ* | *था-ए)-पा-श्रेष्ठ* | *स्थान-मानिस-श्रेष्ठ* | *अधिकारी* |

*थाएपा* (स्थानमालिक) शब्दको मध्यस्वर संकुचनमा पर्दा *थापा* मात्र रह्यो र पहिचान जोगाउन श्रेष्ठ प्रत्यय थपेको छ । क्षेत्री समुदायभित्रको थापा थर धेरै प्रचारमा भएकोले यी *थापा श्रेष्ठ*लाई क्षेत्री समूहको सम्झने पनि थुप्रै छन् । तर वास्तवमा थापा श्रेष्ठ *थाएपा श्रेष्ठ* हुन् ।

| | | | |
|---|---|---|---|
| *थिकेश्रेष्ठ* | *थिके-श्रेष्ठ* | *महंगो-श्रेष्ठ* | *महंगो-श्रेष्ठ* |
| *थकुश्रेष्ठ* | *थकु-श्रेष्ठ* | *ठकुरी-श्रेष्ठ* | *सठकुरीश्रेष्ठ* |
| *दुश्रेष्ठ* | *दु-?दुवाल)-श्रेष्ठ* | *दु-?दुवाल)-श्रेष्ठ* | *द्वारेश्रेष्ठ* |

दुवाल (द्वारे)को अन्तिम वर्ण लुप्त दुई पटकसम्म हुँदा दु (दीर्घता क्षय)>दुः-क्षतिपूरक दीर्घमात्रा) > दुवा (दीर्घता क्षय) > दुवाः > दुवाल) दु मात्र रहन पुग्यो ।

| | | | |
|---|---|---|---|
| *ध्याकोश्रेष्ठ* | *ध्याको-श्रेष्ठ* | *कुना-श्रेष्ठ* | *कुनाको श्रेष्ठ* |
| *बालाश्रेष्ठ* | *बाला-श्रेष्ठ* | *राम्रो-श्रेष्ठ* | *राम्रो श्रेष्ठ* |
| *बादेश्रेष्ठ* | *बा-दे-श्रेष्ठ* | *आधा-देश-श्रेष्ठ* | *आधाशहर ढाकेका श्रेष्ठ* |
| *बागश्रेष्ठ* | *बा-ग-श्रेष्ठ,* | *आधा-कोटि-श्रेष्ठ,* | *कच्चा श्रेष्ठ* |
| *वि (विद्याधर) श्रेष्ठ* | *विद्या-धर-श्रेष्ठ* | *विद्या-लिने-श्रेष्ठ* | *विद्याहुने श्रेष्ठ* |

विद्या धारण गर्ने अर्थभएको विद्याधर क्षयीकरणमा (वि-द्या-ध-र) तीन चोटीसम्म परेर वि मात्र रह्यो र आफुलाई पुनः परिभाषित गर्न गाह्रो भएर श्रेष्ठ प्रत्यय जोडेको देखिन्छ ।

| | | | |
|---|---|---|---|
| *माकश्रेष्ठ* | *माक-कः)-श्रेष्ठ* | *बाँदर-श्रेष्ठ* | *बाँदर-श्रेष्ठ* |
| *लवश्रेष्ठ* | *लव-श्रेष्ठ* | *नाफा-श्रेष्ठ* | *लवट श्रेष्ठ* |
| *लामाश्रेष्ठ* | *ला-मा-श्रेष्ठ,* | *मासु-माला-श्रेष्ठ,* | *सुकुटीको माला हुने श्रेष्ठ* |
| *सीश्रेष्ठ* | *सी-श्रेष्ठ* | *प्रसाद-श्रेष्ठ* | *प्रसाद पाउने श्रेष्ठ(?)* |

**५.३ तत्सम् संस्कृत**

संस्कृतको जस्ताको तस्तै प्रयोग भएका *कुनांबिनां* यस कोटिमा परेका छन् । यसको अर्थ यत्रतत्र पाईने हुँदा यहाँ थप व्याख्या गर्नु आवश्यक भएन । यस वर्गमा ३३ शब्द परेका छन् ।

| | | | | |
|---|---|---|---|---|
| *(३)* | *अमात्य* | *अमात्य* | *मन्त्री* | *मन्त्री* |
| | *आचार्य* | *आचार्य* | *आचार्य* | *आचार्य* |
| | *उपाध्याय* | *उपाध्याय* | *उपाध्याय* | *गुरू* |

| | | | |
|---|---|---|---|
| एकादशी | एकादशी | एकादशी | एकादशी |
| कपाली | कपाली | कपाली | कापालिक सन्यासी |
| दर्शनधारी | दर्शन-धारी | दर्शन-लिने | दशनामीको एक थर |
| कर्माचार्य | कर्म-आचार्य | कर्म-गुरु | कर्मकाण्डी गुरु |
| कक्षपति | कक्ष-पति | घेरा-मालिक | आफ्नो घेराको मालिक |
| कायस्थ | कायस्थ | कायस्थ | लेखनदास |
| कारञ्जित | कारञ्जित | कारञ्जित | भाःको संस्कृत शब्द |
| कुवेर | कुवेर | कुवेर | धनका देवता |
| गोसाइँ | गो-साइँ | गाइ-मालिक | ईश्वर |
| जोशी | जोशी | ज्योतिष | जोशी |
| तुलाधर | तुला-धर | तराजु-समाउने | व्यापारी |
| दैवज्ञ | दैव-ज्ञ | दैव-जान्ने | ज्योतिष |
| देवप्रधान | देव-प्रधान | देव-प्रधान | देवप्रधान |
| बज्राचार्य | बज्र-आचार्य | बज्र-गुरु | बज्रयानी गुरु |
| बुध्दाचार्य | बुध्द-आचार्य | बुध्द-गुरु | बुध्दपुजा गर्ने गुरु |
| वैद्य | वैद्य | वैद्य | वैद्य |
| भद्रा | भद्रा | भद्रा नक्षत्र | भद्रा |
| भारद्वाज | भारद्वाज | भरद्वाज ऋषि | भरद्वाज ऋषिका वंश |
| मल्ल | मल्ल | पहलवान | पहलवान |
| मूल | मूल | मूल | मूल |
| महांकाल | महां-काल | ठुलो-काल | महांकाल |
| रजक | रजक | रजक | धोवी |
| राजचल | राज-चल-र) | राजा-दूत | राजाका दूत |
| राजबाहक | राज-बाहक | राजा-बोक्ने | राजालाई बोक्ने |
| राजोपाध्याय | राजा-उपाध्याय | राजा-गुरु | राजगुरु |
| राजपुत | राज-पुत | राजा-सन्तान | राजाका सन्तान |
| राजपुतुवार | राज-पुतु-वार | राजा-टुना-मान्छे | राजाकामान्छे (?) |
| राठौर, राइठोर | | | |
| राय | राय | राय | राय (पद) |
| सुवेदी | सु-वेदी | राम्रो-वेदजान्ने | वेदजान्ने |
| क्षेत्रपाल | क्षेत्र-पाल | क्षेत्र-रक्षक | क्षेत्रपाल |

## ५.४ तद्भव संस्कृत

संस्कृत शब्दको ध्वनि परिवर्तन भई स्थानीयकरण भएका यस कोटीमा १० शब्द परेका छन् ।

| | | | | |
|---|---|---|---|---|
| (४) | उदय | उदय | उदय | उदास |
| | उलक | उलक | उलक | उल्का |
| | अदुवा | अ-दुवा | नका-द्वार | द्वारहीन |

| | | | |
|---|---|---|---|
| *अवाल* | *अवाल* | *अवाल* | *अवाल* |
| *कसपाल* | *कस-पाल* | *कायस्थ-रक्षक* | *कायस्थको रक्षक* |
| *जुगी* | *जुगि* | *योगी* | *जोगी* |
| *जुवाल* | *जु-वाल* | *जानु-मानीस* | *वटुवा* |
| *तमोट* | *तमोट* | *ताम्रकार* | *ताम्रकार* |
| *नेवाऽ* | *नेवाऽ* | *नेवार* | *नेवार* |
| *राजथला* | *राज-थला* | *राजा-आफ्नत* | *राजाका आफ्नत* |

### ५.५ लवट –वर्णशंकर

नेवार एउटा मात्र नश्ल, वर्ण, धर्मको शुध्द समुदाय नभइकन विभिन्न समयमा उत्तर र दक्षिणबाट आएका मंगोल र आर्य मूलका मानिसहरूको मिलनबाट निस्केको वर्णशंकर समुदाय हो । तिनका वर्ण, भाषा, र स्वभावमा त्यो छाप स्पष्ट देखिन्छ । नेपालको भूमि तीन तिरबाट भारतवेष्ठीत र उत्तरको भूगोल साह्रै कठीन हुँदा नेपालका अन्य समुदाय जस्तै नेवार समुदाय पनि दक्षिणको सांस्कृतिक, सामाजिक, राजनीतिक, धार्मिक वन्धनबाट उम्केको देखिँदैन । नेवार समुदायलाई आजपनि नेपालमा हुने हरेक लाभको हिस्सेदारीबाट टाढा राखिनुका विभिन्न कारण मध्ये नेवारको उत्पत्तिमा दुईथरी नश्लको हात रहेको कुरा सत्य मान्नै पर्छ । यस समुदायमा जन्मिने प्रत्येकले आर्य र मंगोल दुवै नश्लका मानिसहरूको उत्पीडन विभिन्न वहानामा सहनु परेको छ । जेहोस् त्यसरी वर्णशंकर भई जन्मनुमा जन्मिने मानिसको हात नभएपनि ऊ बाँचेको समुदायको भाषामा स्पष्ट प्रतिविम्बित भइरहेको प्रमाण यत्रतत्र पाइए जस्तै यो *लवट* शब्द पनि एथ्नोलिङ्गुइष्टिक प्रमाणको रूपमा विद्यमान छ । प्रस्तुत उदाहरणमा कायस्थ, ठकुरी, राजकूलसित वर्णशंकर भएको देखिन्छ । यस वर्गमा ४ शब्द परेका छन् ।

| | | | | |
|---|---|---|---|---|
| (५) | *कसलवट* | *कस-लवट* | *कायस्थ-नाफा* | *कायस्थको वर्णशंकर* |
| | *थकुलवट* | *थकु-लवट* | *ठकुरी-नाफा* | *ठकुरीका सन्तान* |
| | *राजलवट* | *राज-लवट* | *राजा-नाफा* | *राजाका सन्तान* |
| | *लाएलः* | *लाए-लः* | *दरवार-नाफा* | *राजपुत्र* |

*लवट* शब्दको क्रमशः *लवट*>*लवः* (अन्तिमवर्ण क्षय)>*लवः*(क्षतिपूरक दीर्घता) >*लव* (दीर्घता क्षय)>*लः* (अन्तिमव्यञ्जन लुप्त, क्षतिपूरक दीर्घता) भएको छ । राजलवट र *लाएलः* को अर्थ एकै लाग्छ । राजकूल-लवट दुई तत्सम संस्कृत शब्दको समस्त शब्द राजलवट हो भने *लाएलः* तद्भव हो । राजकुलबाट > लाजकुल (लकारीभवन > लाअकुल (घोषीभवन)> लाएकुल (स्वरवृध्दि)>*लाएकुः*(अन्तिमवर्ण लुप्त) हुनगयो । यसलाई अचेल नेपालभाषाका लेखकहरूले लाय्कू लेख्छन् जून वर्णविज्ञानका दृष्टिले खण्डन योग्य छ । यी *लाएकू* र *लः* समास हुँदा *लाएकूको* कू क्षय हुन्छ र *लाए* मात्र रहन्छ । बाँकी रहेको *लाए* र *लः* समास भएर समस्त शब्द *लाएलः* (१२९) बन्छ ।

### ५.६ बन्जार

नेवार समाज ब्यापार व्यवशायमा विशेष सक्रिय हुने समुदाय हो । बन्जार जोडिएको थर पनि निकै छन् । यो बस्तु विशेषको ब्यापार गर्ने वर्ग चिनाउन प्रयोग गरिएको पाइन्छ । यस वर्गमा ११ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| (६) *आलुबन्जार* | *आलु-बन्जार,* | *आलु-बन्जार,* | *आलुब्यापारी* |
| *खानिव-ञ्जार)* | *खानी-वञ्जार* | *खानी-वञ्जार* | *खानीवञ्जार* |
| *गाबञ्जार* | *गा-बञ्जार* | *ओद्ने-बञ्जार* | *ओद्ने व्यापारी -नेवा-नेप)* |
| *चिकंवंजार* | *चिकं-वंजार,* | *तेल-वंजार,* | *तेलवंजार* |
| *जाकिबञ्जार* | *जाकि-बञ्जार* | *चामल-बञ्जार* | *चामलव्यापारी* |
| *तुकंबन्जार* | *तुकं-बन्जार* | *साग-बन्जार* | *सागव्यापारी* |
| *देउबन्जार* | *देउ-बन्जार* | *देवता-बन्जार* | *देवबन्जार* |
| *पालुबन्जार* | *पालु-बन्जार* | *अदुवा-बन्जार* | *अदुवा व्यापारी* |
| *फौबन्जा(र)* | *(फउ)फौ-बन्जा* | *सकेको-बञ्जार* | *फौबञ्जार* |

*फ*"सक" धातुमा निर्धारक *-गु* जोडिएर *फगु* "सकेको" हुन्छ । *फगु* को अन्तिम व्यञ्जन क्षय भएर *फउ* हुन्छ । सकेको अर्थात् जे भेटियो सोको व्यापार गर्ने *फउबञ्जार* (१३८) हुन्छ ।

| | | | |
|---|---|---|---|
| *सिंबञ्जार* | *सिं-बञ्जार* | *काठ-बञ्जार* | *काठव्यापारी* |
| *लुबञ्जार* | *लु-बञ्जार* | *सुन-बंजार* | *सुनव्यापारी* |

### ५.७ वासस्थान

संसारभरि नै बासस्थानको नामबाट थर लेख्ने चलन छ । नेवारसमाज पनि यो परम्पराबाट भिन्न छैन । छेँ, घर बा वासस्थानसित जोडिएर थर लेख्तै आएका छन् । घरको आकार प्रकार, घर बनेको स्थान, त्यस घरमा रहने मानिसको प्रकृतिबाट थर बनेको देखिन्छ ।

#### क. छेँ-घर

| | | | |
|---|---|---|---|
| (७) *उभाथाँछे* | *उभा-थाँ-छे* | *उद्यान-स्थल-घर* | *उद्यानमा रहने सेनापति* |

*ओभा, ओजः, उभाथाँछे*को पूर्णरुप *ओभानथाछेँ* हो । यो शब्द *उद्यान स्थल* छेको सन्धी रूप हो । उद्यानसहितको वासस्थानमा रहने सेनापति भएकोले उद्यान स्थल छेए चोम्ह पँमाए (ओभान्थाछे प्रधान अथवा ओभाप्रधान अथवा ओभा) भन्ने चलन छ । यसको स्थानीयकरण भएको शब्द किवाछेँ अद्यापि प्रचलनमा छ । यसको अर्थ *किवा* (*केव* काठमाडौको भाषामा) 'बारी' र छेँ 'घर' अर्थात् 'बारीमा रहेको घर' हुन्छ । यसको रूपध्वनी परिवर्तन प्रक्रिया यस्तो हुन्छ । उद्यानस्थलछेँ> उध्यानस्थलछेँ (स्वशन)>उध्यानथलछे [de–clusterization]> उध्यानथनछे (नासिकिकरण)>

उझानथनछे (स्पघर्षीकरण)> उझानथानछे (परागत समिभवन)> उझानछे [Deletion of redundancy]> उझांछे (नासीभवन)> उझां (अन्तपदक्षय)> ओझां (स्वरपतन)> ओझा (नासिकिक्षय)>ओजा (अश्वसन)> ओज (स्वरउत्थान) । यस वर्गमा १४ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| चपछे | चप-छे | चपाड-घर | गुठीघर |
| चकुचाछैं | चकु-चा-छैं | चकु-लघु-गर | चकुचाछैं |
| छेमिँखा | छे-मिँखा | घर- आँखा | घरको आँखा |
| जोन्छे | जम्बुक-छैं | स्याल-घर | जोन्छे |
| ध्याकोछैं | ध्याको-छे | कुना-घर | कुनाको परेको घर |
| ध्वयाछैं | ध्वया-छे | ठेसलाग्नु-घर | धकेलिएको घर |
| न्हुच्छे | न्हू-छैं | नयाँ-घर | नयाघरे |
| न्हुच्छेप्रधान | न्हू-छैं-प्रधान | नयाँ-घर-प्रधान | नयाँघरे प्रधान |
| नवाछैं | नवा-वाः)-छे | मिश्री-घर | मिश्री दिने घर |
| बिजुकछैं | बि-जु--चु)क-छैं | सर्प-खस्नु-चोक-घर | सर्प खसेको चोकको घर |
| लाकुलाछे | ला-कु(को)-ला-छे | बाटो-मुनि-पर्नु-घर | बाटोमुनिको घर |
| सलिछे | सिलि-छैं | चोसो-घर | चोसोपरेको घर |
| साङ्गाछैं | सां-गा-छैं | साल-गाउ-घर | सांगाली घर |

**ख. *वास्तु***

घर, घरसित सम्बन्धित वस्तु, घरको स्थिति, घरमा जोडिएको पानीको श्रोत यसकोटीमा १५ शब्द परेका छन् ।

| | | | | |
|---|---|---|---|---|
| (८) | कुम्पाख | कुम-पाख | कुना-बलेनी | बलेनीकोकुना |
| | खोखालि | खो-खा-लि, | मुहार-कोटी-पछाडि | केन्द्रबाट पछाडिको घर |
| | छेंतला | छे-तला | घर-तल्ला | घरको तल्ला |
| | खाइतु | खाएश्रखाइ-तु | पोखरी-इनार | भुँइकुवा |
| | चाकतु | चाक-तु | गोलो-इनार | गोलोइनार |
| | चालँ | चा-लँ | खुलेको-बाटो | खुल्ला बाटो |
| | चाँसि | चाँ-सि | चाँप-रूख | चाँपको रूख |
| | तझ्या | त-झ्या | ठुलो-झ्याल | ठुलाझ्याले |
| | तपोल | त-पोल | ठुलो- छाना | ठुलोछाना |
| | तिकिझ्या | तिकि-झ्या -ल) | बुट्टा-झ्याल | आँखीझ्याल |
| | ताहाकासि | ताहा-कासि | लामो-कौसि | लामो कौसी |
| | ताहामता | ताहा-मता | लामो-मातन | लामो बैठक |
| | लिवि | लि-वि | पछाडि-बाटो | पछाडिको बाटो |
| | लोहला | लोह-ला | ढुङ्गा-बाटो | ढुङ्गाले छापेको बाटो |
| | लाछि | लाछि | लाछि | लाछि |

**ग. *खो*-खूर, खुट्टा**

चारखुट्टे सामग्रीका खुट्ट बुझाउने शब्द यस कोटीमा २ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| *(९) खाताखो* | *खाता-खो* | *खाट-खुट्टा* | *खाटको खुट्टा* |
| *सिखो* | *सि-खो* | *काठ-खुट्टा* | *काठको खुट्टा* |

**घ. *ख्यो* - चौर**

मानिस बसेको चौरबाट पनि मानिसको नामकरण गरिएको छ । यस वर्गमा ३ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| *(१०) तुल्सी वाख्य* | *तुल्सी-वा-ख्य* | *तुलसी-फाल्ने-चौर* | *तुलसी विसर्जन चौर* |
| *पालिखे (ल)* | *पालि-खेल* | *साट्नु-चौर* | *साटेको चौर* |
| *मलख्यो* | *मल (मला)-ख्यो* | *शौच-चौर* | *शौचगर्ने चौर* |

**ङ. *खुरखुँ*- खोला**

*खु*ले सामान्य अवस्थामा खोला जनाउछ । *खुँ* ले चोरको अर्थ लाग्छ । तर दिइएका शब्द र स्थानीय बासिन्दाले प्रयोग गर्ने सन्दर्भमा *खु* र *खुँ* ले एउटै अर्थ खोला लागेको पाइयो । यद्यपि कोशीय अर्थ फरक भए पनि सान्दर्भिक अर्थको हिसावले *खु* मा अनुनासिक थपिए पनि अर्थ एउटै देखियो । यस वर्गमा ४ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| *(११) दनेखु* | *दने- खु* | *उभिनु-खोला* | *ठाडोखोला* |
| *सितिखु* | *सिति-खु* | *सित्तै- खोला* | *कामनलाग्ने खोला* |
| *सुजखुँ* | *सुज- खु* | *सुर्य-खोला* | *सुर्यमण्डलको खोला* |
| *मारि, मारिखुँ* | *मारि- खुँ* | *मण्डल-खोला* | *मण्डलको खोला* |

**च. रूख, झारपात**

मानिसको बासस्थान वरिपरि मानिसको रक्षार्थ रोपिएका झार, रूखविरुवासित सम्बन्धित ४ शब्द यस कोटीमा परेका छन् ।

| | | | |
|---|---|---|---|
| *(१२) तुल्सी* | *तुल्सी* | *तुलसी* | *तुलसी* |
| *नला* | *नला* | *धानको नयाँ बोट* | *नौलो पराल* |
| *सिमाछ्वा* | *सिमा-छ्वा* | *रुख-पछार्ने* | *रुखमास्ने* |
| *सिमालि* | *सिमा-लि* | *रूख-उखेल्नु* | *रूख उखेल्ने* |

## ५.८ बासिन्दावाचक प्रत्यय

### क. *-मि*

यस वर्गमा १७ शब्द परेका छन् । यो ऐतिहासिक शब्द हो । नेपालभाषामा मात्र हैन धेरै चीनीया-तिब्बति परिवारका भाषामा *मि* को अर्थ मानिस हुन्छ । नेपालभाषामा *-मि* ले समान्यतः मानिस बुझाउँछ भने त्यो-*मि* ले शीप, वासिन्दावाचक र अवस्थावोधक प्रत्यय भएर काम गरीरहेको हुन्छ । *मि* प्रत्ययले सानो ठाउँको वासिन्दा बुझाउछ भने *ए* र *इ* ले वृहत्तर क्षेत्र बुझाउछ । काठमाडौंको मानिसलाई *यँ* (काठमाडौ)-*मि* (वासिन्दा) भनिन्छ । कारण काठमाडौले राजधानीको हैसियत शाहकालपछि मात्र पाएको देखिन्छ । असली शासक या त भक्तपुरको या त पाटनको हुन्थे । त्यसकारण पाटनको वसिन्दालाई *यल* (ललितपुर) *-ए* (वासिन्दा) र भक्तपुरको वासिन्दालाई *खोप* (भक्तपुर) *-ए* (वासिन्दा) अद्यापि जनबोलीमा भन्दै आएका छन् । *-आलि* प्रत्यय नेपाली भाषाबाट आएको देखिन्छ । नेपाली भाषामा आकारान्त शब्दको पछाडि-*आली* प्रत्यय जोडेर वासिन्दावाची प्रत्यय बनाएको देखिन्छ, जस्तो बुइपाली, सानेपाली, रोल्पाली, पाल्पाली ई । कुनै ठाउँ विशेषको नाम जस्ताको तस्तै *कुनांविनां* को रूपमा प्रयोग गरेको पनि पाइयो ।

**(अ) वासिन्दावार्ची**

| | | | |
|---|---|---|---|
| *(१३) नालामि* | *नाला-मि* | *स्थान-मानिस* | *नालाको मान्छे* |
| *यमि* | *य-मि* | *काठमाडौ-मान्छे* | *काठमाडौंका मानिस* |
| *भोंमि* | *भों-मि* | *बनेपा-मान्छे* | *बनेपाली* |
| *सांगामि* | *सां-गा-मि* | *साल-गाउ-मान्छे* | *सांगाली* |

**(आ) मानिस**

| | | | |
|---|---|---|---|
| *(१४) बलामि* | *बल-ला-मि* | *शक्ति-हुने-मानिस* | *बलबान व्यक्ति* |
| *मुल्मि* | *मुल-मि* | *मूल-मान्छे* | *मूलमान्छे* |

**(इ) शीप**

| | | | |
|---|---|---|---|
| *(१६) चोकमि* | *चोक-मि* | *उर्दीसुनाउने-मानिस* | *कटुवाल* |
| *सायमि* | *साय-मि* | *साल-मान्छे* | *सालको मान्छे (साल्मि)* |

**(ई) अवस्था**

| | | | |
|---|---|---|---|
| *(१७) याकःमि* | *याकः-मि* | *एक्लो-मान्छे* | *एकलोमान्छे* |

### ख. *-ए*

| | | | |
|---|---|---|---|
| *(१८) खोपए* | *खोप-ए* | *भक्तपुर-वासिन्दा* | *भक्तपुरे* |

| | | | |
|---|---|---|---|
| *चुके* | *चुक-ए* | *चोक-वासिन्दा* | *चोके* |
| *थजः, तजले (ल्या)* | *त-जल-ए* | *ठुला-वन्धु-वि* | *ठुलो खलक* |
| *द्वारे* | *द्वार-ए* | *ढोका-वस्ने* | *ढोके -नाइके)* |
| *देशेमरु* | *देश-ए-मरु* | *देश-मा-नभएको* | *अनौठो* |
| *पलाचोंके* | *पलाचोंक-ए* | *पलाचोंक-वासिन्दा* | *पलाचोंके* |

**ग. *–आलि***

| | | | |
|---|---|---|---|
| (१९) *गोर्खालि* | *गोरखा-आली* | *गोरखा-आली* | *गोर्खाली* |
| *बनेपालि* | *बनेपा-आली* | *बनेपा-आली* | *बनेपाली* |

**घ. स्थाननाम**

स्थानको नाम नै *कुनांविनां* को रूपमा प्रचलन भएका ३ शब्द यस कोटिमा परेका छन् ।

| | | | |
|---|---|---|---|
| (२०) *ठिमि* | *थि-मि* | *उज्यालो-मान्छे* | *ठिमी* |
| *थैव* | *थै-व* | *माथि-बस्ती* | *ललितपुरको एक गाउँ* |
| *नेपाल* | *नेपाल* | *नेपाल* | *नेपाल* |

## ५.९ कीट, पशुपंक्षी

मानिसको वरिपरि हुने पशु, पंक्षी तथा कीट भइरहने हुँदा तिनीहरूको संसर्गबाट मानिसलाई चिनाउन पनि प्रयोग गरिएको पाइन्छ ।

**क. पशु**

मानिस पशुसितको सान्निध्यमा रहने हुँदा उसले देखेका पशुबाट नाम राख्ने सामान्य स्वभाव भक्तपुरका नेवारहरूमा पनि देखिएको छ । यस वर्गमा २२ शब्द परेका छन् ।

| | | | |
|---|---|---|---|
| (२१) *किसि* | *किसि* | *हात्ती* | *हात्तीजस्तै मोटो* |
| *किसिजु* | *किसि-जु* | *हात्ती-आद* | *गजराज महाशय* |
| *खिचाजु* | *खिचा-जु* | *कुकुर-आद* | *कुकुर महाशय* |
| *घेर्मेसु* | *धिर-मेष* | *ठुलो- राङ्गो* | *गैडा* |

मध्यकालीन नेवार शब्द धिर (ठुलो) र संस्कृत शब्द मेष (राङ्गो) मिलेर *धिर्मेसु* बनेको देखिन्छ, जसमो अर्थ गैडा हुन्छ । यो शब्दको *धि*को स्वर *इ* मेषको स्वर *ए* सित सन्धि गर्छ । यहाँ परगत समीभवन भएको छ । यो रुपसन्धि प्रक्रियालाई शुत्रमा यसरी धिर-मेष > धिर्मेष > धेर्मेषृपरगत समीभवने> धेर्मेषु [उकारी भवन] देखाउन सकिन्छ ।

